श्रीः

पुरातत्त्वप्रकाशनमाला–४६

श्रीमद्वराहमिहिराचार्यविरचिता

# अश्वमेधीययात्रा

[ भट्टोत्पलविरचिता विवरणसहिता ]

ज्योतिषाचार्येण लंसालोपाध्येन देवीप्रसादशर्मणा

टिप्पण्यादिभिः समलङ्कृत्य सम्पादिता

पं. बुद्धिसागरशर्मणः

अध्यक्षतायां

राष्ट्रिया ऽभिलेखालयतः

प्रकाशिता

काष्ठमण्डपः

२०२६

मुद्रकः-

संकटा प्रेस, टेबहाल काठमाडौं, नेपाल ।



श्री

# विभागीय वक्तव्य

राष्ट्रिय अभिलेखालयको संग्रहमा रहेको प्राचीन ग्रन्थ "अश्वमेधीययात्रा" प्रकाशनमा ल्याइंदैछ। प्रस्तुत ग्रन्थमा अश्वमेधका संबन्धमा हाम्रो प्राचीन परंपरा विजययात्राको साहित तथा यात्राका नियमहरूका संबन्धमा महत्त्व पूर्ण विवरण पाइन्छ। आजको वदलिएको युगमा पनि यस ग्रन्थको निकै अंशको अध्ययन हाम्रा निम्ति निकै लाभदायक हुनेछ । हाम्रो प्राचीन ग्रन्थहरूको अनुसन्धान र प्रकाशन गर्ने क्रममा यस ग्रन्थको प्रकाशन अवश्य पनि उत्साहवर्धक मानिने छ।

ग्रन्थको सम्पादन गर्ने श्री देवीप्रसाद लंसाललाई र संकटा प्रेसलाई हार्दिक धन्यवाद।

**रमेशजङ्ग थापा**
निर्देशक
श्री ५ को सरकार, शि. मं. पुरातत्त्व विभाग
२०२६।६।१४।२

# अश्वमेधीययात्रा

## ग्रन्थपरिचय



ज्योतिषशास्त्रलाई मुख्य तीन शाखामा विभक्त गरिएको छ । जस्तै—

ज्योतिःशास्त्रमनेकभेद विततं स्कन्धत्रयाधिष्ठितं
तत्कात्स्न्योंपनयस्य नाम मुनिभिः संकीर्त्यते संहिता ।
स्कन्धेऽस्मिन् गणितेन या ग्रहगति स्तन्त्राभिधानस्त्वसौ
होराऽन्योऽङ्गविनिश्चयश्च कथितः स्कन्धस्तृतीयोऽपरः ॥

—वराहमिहिरः ।

प्रथम संहितास्कन्धमा ग्रहसञ्चार द्वारा विश्वको शुभाशुभ विचार, बजारमा उपलब्ध हुने वस्तुहरूको मूल्यमा घटी बढी स्थिर आदिको विचार, वर्षासंबन्धि विचार, भूकम्प, उल्का, असिना, वज्रपात, धूमकेतुउदय, सूर्य–चन्द्रमा बसने सभा, इन्द्रधनुष आदिको विचार पाइन्छ ।

दोस्रो सिद्धान्तस्कन्धमा पाटीगणित, बीजगणित, रेखागणित, त्रिकोणमिति, गोलीयरेखागणित, चापीयत्रिकोणमिति, प्रतिभाज्ञान, खगोलविज्ञान, श्टङ्गोन्नति, पञ्चाङ्ग निर्माण प्रपञ्च, यन्त्रादि विज्ञान पाइन्छ ।

तृतीय होरास्कन्धमा–जन्मपत्रद्वारा यस जन्मको र पूर्वजन्मको फलविचार, संस्कारादि मुहूर्त्त, यात्रा संबन्धि विचार भूमिशोधनादि वास्तुविद्या, जलविज्ञान, स्त्री-पुरुष लक्षणादि सामुद्रिकविद्या, आदि यस शाखामा पाइन्छ ।

प्रस्तुत विषय पनि वराहमिहिर द्वारा लिखित "अश्वमेधीययात्रा" अश्वमेध यज्ञ गर्न इच्छागर्ने राजालाई दिग्विजय गर्नाका निमित्त दिइने साहितका संबन्धमा लेखिएको छ। यो पुस्तक उक्त आचार्यले लेखेका छन्। भन्ने लेख आजसम्म प्रकाशित भएका ज्योतिष शास्त्रका इतिहासमा पाइदैन। यसको एक प्रति पाण्डुलिपि राष्ट्रियअभिलेखालयमा छ।

राष्ट्रियपुस्तकालयमा रहेका हस्तलिखित ग्रन्थहरू राष्ट्रियअभिलेखालयमा परिणत भएतापनि सूचीपत्र तयार नभएसम्म उक्त पुस्तकालयमा बनेका सूचीपत्रबाट नै हाल काम चलाई राखेको छ। उक्त पुस्तकालयमा "अश्वमेधीययात्रा" भन्ने पुस्तक केवल ६७४४ संख्याको एकमात्र छ। यसको अर्कोप्रति उपलब्ध छैन।

यस पुस्तकमा प्रथमाध्याय देखि मिश्राऽध्याय सम्म ५५ पत्र र गुह्यकसहायाऽध्याय देखि समाप्ति पर्यन्त ३९ पत्र छन्। जम्मा ९४ पत्र छन्, मूलश्लोक विभिन्न छन्दका ५१५ र भट्टोत्पल टीका र मूल दुवै गरी ग्रन्थ संख्या ४१४५ छ। यी पत्रहरूको लम्बाई १० इञ्च चौडाई ४॥ इञ्च छ। हरिताल नलाएको *नेपालीकागत देवनागरी लिपिमा दुवैपट्टि लेखिएको छ। प्रति पत्रमा १४ देखि १६ लाइन सम्म छन्। पहिलो छैटौं पत्रको बीचमा खाली नै छ ३९ सौं पत्रमा चार लाइन मात्र लेखेको छ। ४५ सौं पत्रमा एकापट्टि १२ लाइन अर्को पट्टि ६ लाइन् लेखेको छ। ५५ नौं पत्रमा तीन लाइन आधा मात्र लेखेको छ। पछिल्लो ३८ सौं पत्रमा एकापट्टि आधा लाइन मात्र लेखेको छ। ३९ सौं पत्रमा एकापट्टि एक लाइन मात्र लेखेको छ। यसको अन्तिममा यस्तो लेखेको छ।

> अतीव जीर्णात् त्रिशताब्दतीर्णात् पत्राग्रपृष्ठाक्षरशा विशीर्णात्।
> पाश्चात्यमोढाक्षरतोऽवकीर्णात्संपादितं कष्टत इत्थमेव ॥

अत्यन्त जीर्ण शीर्ण (धूलो प्राय) भएको ३०० सय वर्ष पुरानो अक्षर सबै उडिसकेका, त्यस्मा पनि विदेशी ( ··· ··· ··· ··· ··· ) मोढाक्षरमा लेखिएको सबै प्रकीर्ण पत्रहरू मिलाएर कष्टसाथ संपादन गरें भनेर लेखेको छ। यो पुस्तकको लिपि र कागतको विचार गर्दा लगभग २००-२५० सय वर्ष पुरानो देखिन्छ। उक्त श्लोकका बारेमा विचार गर्दा यो श्लोक

*यो कागत हाल चल्तिमा आइरहेको नेपाली कागत हैन। पहिले मोरङ्गमा बन्ने कागत हो। यो कागत वर्तमान कालमा चलन चल्तिमा ल्याइने नेपाली कागत र भारतीय कागत भन्दा भिन्न छ।



यस पुस्तकका प्रतिलिपिकारको नभै जुन पुस्तकबाट यो पुस्तक सारियो त्यसका प्रतिलिपिकारको हुनु पर्दछ। जेसुकै भए पनि उक्त मोढाक्षरको समय ६००-६५० वर्ष भन्दा यताको हैन।

उक्त पुस्तकमा सार्वभौम राजाले दिग्विजय गरेर सम्पत्ति जम्मा पारेपछि अश्वमेध यज्ञ गर्नु भन्ने जुन वैदिक परम्परा छ, तदनुसार विजय यात्राका निमित्त दिइने साहित र यात्रा गर्ने राजाले पालन गर्नु पर्ने नियमहरूको विशद व्याख्या गरेको छ। यसमा मन्त्री-दैवज्ञ पुरोहितले राज्यका प्रति के के जिम्मेवारी बहन गर्न पर्दछ भन्ने पनि दर्शाएको छ।

## राजा—मन्त्री—दैवज्ञ—पुरोहितको कर्तव्य

१ पुत्रवत्प्रजाको पालन गर्नु राजाको धर्म हो, त्यस्तै राजा-प्रजाको हित हुने कार्य ज्योतिषि र पुरोहितले गर्नु पर्दछ।

२ आफ्नो-मन्त्रीको राजकाज संबन्धि व्यवस्थाको, ढुकुटीको 'सांधकिल्लाको' ऐनकानूनको उल्लङ्घन गर्ने राष्ट्रमा भएका विरोधि तत्वहरुलाई एक एक गरी केलाएर दैवज्ञ-पुरोहित र मन्त्रीहरुसँग सल्लाह ली राजाले स्वविवेक द्वारा उचित दण्डदिनु पर्दछ।

३ ज्योतिषीले राजा-मन्त्री-आफ्नो र पुरोहितको शुभाशुभ विचार गर्नु पर्दछ, पुरोहितले दैवज्ञको कथनानुसार अनुष्ठानादि गर्नु पर्दछ, मन्त्रीले किल्ला-कोश-सेनाको बलाबल राज्यको सुरक्षा आदिको विचार गर्नु पर्दछ, राजाले उपर्युक्त तीनै थरीको सल्लाहलो स्वविवेकले आँटेको काम आरम्भ गर्नु पर्दछ।

## ४साम—दान—दण्ड—भेद्को प्रयोग काल

ज्योतिष शास्त्रको अध्ययन नगरेकाले साम-दान-दण्ड-भेदको प्रयोग काल जान्दैनन्,

१राज्ञःप्रजापालनंधर्म स्तथा सांवत्सरपुरोहितयो रपि।

२स्वाम्यामात्यजनपदकोशदुर्गदण्डानां ये परिपन्थिन स्तेषां राज्ञा साम–भेद दान–दण्डादिना पुरुषकारेण च निग्रहो दैववित्पुरोहितमन्त्र्यनुमत्या कर्तव्यः।

३दैवज्ञपुरोहितयो मन्त्रिपार्थिवयोश्चदैवज्ञेन दैवज्ञेयं, पुरोधसा तदनुष्ठानं कर्तव्यं, मन्त्रिणा पौरुषं ज्ञेयं, राज्ञा तदनुष्ठानं कर्तव्यम्।

४साम्नो जीवः स भृगुतनयो दण्डनाथौ कुजार्कौ
    दानस्येन्दुःशिखियमबुधाः सामग भेदनाथाः।
वीर्योपेतै रुपचयकरै र्लग्नगैःकेन्द्रगैर्वा
    तत्तत्सिद्धिं व्रजति तदहः स्वांशके वापि तेषाम ॥

अतः मन्त्रीले ज्योतिषशास्त्र पढनै पर्दछ, अथवा ज्योतिषशास्त्र पढेकालाई मन्त्री बनाउनु पर्दछ भन्ने कुरो यसबाट देखिन्छ। सर्व प्रथम राजाको जन्मपत्र हेर्दा जन्म समयमा कुन कुन ग्रह बलिया छन्, यात्राकालमा कसको दशा अन्तर दशा पर्दछ, गोचरबाट कुन कुन ग्रह बलिया देखिन्छन् यो सबै विचार गरी सके पछि मात्र फलादेश गर्न उचित हुन्छ।

जस्तै- बृहस्पति र शुक्र सबभन्दा बलवान् छन् भने, बृहस्पति र शुक्रवारका दिन, वृष, तुला, धन, मीन लग्न पारेर अथवा तिनका नवमांश पारेर यात्रा गऱ्यो भने त्यस यात्रामा शत्रुसंग सन्धि गर्नु नै कल्याण कारक हुन्छ। यदि सूर्य–मङ्गल बलिया भए तेस यात्रामा शत्रुलाई पिटपाट पारिन्छ, अतः दण्डनीतिको अवलम्बन गर्नुनै उचित हुन्छ। सबै ग्रह भन्दा चन्द्रमा बलवान् भए दान नीतिको प्रयोग सफल हुन्छ, केही दिएपछि शत्रु वसमा आउँछ। यदि बुध शनि–राहु–केतु बलिया छन् भने भेदनीतिको अवलम्बन गर्नुपर्छ, आफ्नो मित्र एवं शत्रुको शत्रुलाई परस्परमा लडाएर शक्ति क्षीण भएपछि आफुले आक्रमण गर्नु पर्दछ। यसरी विचार पूर्वक गरिएको यात्रा कहिल्यै असफल हुँदैन।

## वैदिक हिंसा हिंसा हैन

१ हिंसा गर्नाले पापलाग्दछ भन्ने कथन निर्विवाद सिद्ध छ। तर हिंसा धेरै प्रकारका हुन्छन्। जस्तै- अकारण पशु–पंक्षीको वध गर्नु, स्वार्थसिद्धिका निमित्त अर्कोलाई सताउनु, बलियाले कमजोरलाई थिचो–मिचो गर्नु, अकारण लडाई झगडा गर्नु इत्यादि। यज्ञ यागादि गर्दापनि हिंसा हुन्छ। हिंसालाई दुई भागमा बाँडन पऱ्यो, एक वैदिक हिंसा अर्को इतर हिंसा वेदविहित हिंसालाई शास्त्रकारले हिंसा मानेको छैन। अतः आचार्य लेख्नुहुन्छ, पृथ्वी भरका राजा रजौटालाई जितेर म अश्वमेध यज्ञ गर्दछु भन्ने प्रतिज्ञा गरेर विजय यात्रा गर्दछ र उक्त यात्रामा पर्न आएका कठिनाईलाई पन्छाउँदा जे जति प्राणिवध हुन्छ, त्यसबाट लाग्ने हिंसाजन्य पाप विजयी राजालाई लाग्दैन जस्तै— वैदिक यज्ञ यागादिमा पशु बलि दिदा पाप लाग्दैन, त्यस्तै यज्ञका बाधकहरूको वध गर्दा पाप लाग्दैन।

१यद्ध्येऽश्वमेधेन विजित्य धात्रीमित्येव मभ्युद्यमिनो नृपस्य।
विनिघ्नितो विघ्नकरान् न पापं क्रिया क्रमेणैव पशून् मखेषु॥

*यज्ञार्थं पशवः सृष्टाः स्वयमेव स्वयंभुवा।
यज्ञस्य भूत्यै सर्वस्य तस्माद्यज्ञ वधोऽवधः॥

मनुस्मृति अ. ५ श्लो. ३९



१ वेद आज्ञादिन्छ कि सार्वभौम राजाले अश्वमेध यज्ञ गरोस। शास्त्रको निर्देश यो पनि छ कि यो यज्ञ अल्पव्यय साध्य छैन।

२ अतः सम्पत्तिका निमित्त राजाले सर्व प्रथम दिग्विजय यात्रा गर्नु पर्दछ। अतः शास्त्रीय मर्यादालाई भङ्ग नगरी, शास्त्रको मर्यादा पालन गर्दा गर्दै हुन गएको हिंसालाई हिंसा मन्न हुदैन, अतः यज्ञका निमित्त युद्धगर्दा हुनगएको हिंसाबाट उत्पन्न भएको पाप राजाले भोग्नु पर्दैन, त्यस प्रकारको विजय यात्राका निमित्त साहित दिने दैवज्ञ पनि पापको भागी हुँदैन।

## ३राजज्योतिषीको लक्षण

राजज्योतिषी कस्तो हुनु पर्द छ। भड्किला लुगा नलाउने, विशेष शृङ्गारको सोख नभएको कुनै प्रकारको अंबलमा आसक्त नभएको बुद्धिमान, परिमित बोल्ने, ज्योतिषशास्त्रका तीनै शाखामा पटु विशिष्ट कुलमा जन्मिएको प्रत्युत्पन्नमति, आफ्नो कर्तव्य पालनमा सुस्ति नगर्ने समयको मूल्य संझिने, कुनै प्रकारको खुन खोट नभएको, यस्तो मुख्य ज्योतिषी र योग्य योग्य सहायक ज्योतिषी राख्नु पर्द छ। ज्योतिषीमा भएका लक्षण र गुणले युक्त वेद वेदाङ्गका पूर्ण ज्ञाता नैष्ठिक पुरोहित हुनु पर्दछ।

## ४प्रश्नकर्ताको नियम

राजाले विजय यात्रागर्ने निश्चय भएपछि, प्रातःकालमा पूर्वोक्त ज्योतिषीहरूको सभा बोलाएर, सर्व प्रथम भगवान् सूर्यलाई प्रणाम गरी, हातमा फल फूल लिई, पूर्वाभिमुख भएर, आफ्ना इष्टदेव तथा गुरु ब्राह्मणलाई प्रणाम गरी, शुद्धमनले आफ्नो र राष्ट्रको हित चिताउने मुख्य दैवज्ञलाई संबोधन गर्दै एक प्रश्नमात्र गर्नू। धेरै प्रश्न गरेमा मुख्य प्रश्न कुनलाई

१ सार्वभौमो यजेत इति श्रुतिः
२ अश्वमेधाख्ययागस्य संपत्यर्थं राज्ञा पृथ्वीविजयः कर्तव्यः।
३ सांवत्सर स्तस्य विनीतवेषो धीमान्च तन्त्राङ्गपटुः कुलीनः।
दक्षः प्रगल्भोऽविकलो विनीत स्तादृग्विध स्तस्य पुरोहितोऽपि॥
४ तस्मान् नृपः कुसुमरत्नफलाग्रहस्तः प्रातः प्रणम्य रवये हरिदिङ्मुखस्थः।
होराङ्गशास्त्रकुशलान् हितकारिणश्च संहूय दैवगणकान् सकृदेव पृच्छेत्॥

मान्ने भन्ने संदेह हुन जान्छ, किनकि प्रत्येक प्रश्नको फल बेग्ला बेग्लै हुन्छ। कुन प्रश्नलाई प्रधानता दिएर फलादेश गर्ने भन्ने दुविधा हुने हुनाले प्रश्नकर्ताले एकपकट मात्र प्रश्न गर्नु, त्यसको उत्तर एकै प्रकारको हुन्छ।

## [1]प्रश्नको उत्तर कसलाई सुनाउने ?

प्रश्नकर्ताको प्रश्न सुनिसके पछि दैवज्ञले तेसै सभामा बसेर वा अन्यत्र बसेर तात्कालिक प्रश्नलग्नबाट र प्रश्नकर्ताको जन्मपत्र बाट, अन्यान्य निमित्तबाट अङ्गस्फुरण, श्वास प्रश्वासबाट शुभाशुभ विचार गर्नू। जन्मपत्र हेर्दा वर्तमान समयमा महादशा अन्तर्दशा कसको पर्दछ। उच्चग्रह, स्वगृहीग्रह केन्द्रवर्तीग्रहका दशालाई आरोहिणीदशा भन्दछन्, त्यस्ता महादशा- अन्तर्दशा भएका बेलामा पूर्णफल पाइन्छ, त्यस समयमा विजय यात्रा गर्न हुन्छ। बलहीनग्रह, शत्रुगृहीग्रहका दशालाई रिक्तदशा भन्दछन्, यस प्रकारका दशा अन्तर दशामा विजय यात्रा गर्न हुँदैन, यदि गरेमा यात्रा असफल हुन्छ। यात्राको साहित हेर्नु भन्दा पहिले यात्रा कर्ताको आयुज्ञान गर्नु अत्यावश्यक छ। यदि यात्रा काल भित्रै मृत्यु अपमृत्यु योग परेको रहेछ भने जतिसुकै राम्रो साहित भएपनि त्यो साहितले के गर्ने ?। यो सबै हेरेर जुन शास्त्र सम्मत देखिन्छ त्यसैलाई यथार्थ फल मानेर फलादेश गर्नू। यदि शास्त्रीय विचारबाट खराब देखिए पनि सभामा राम्रो छ, यात्रा शुभ सूचक छ भन्नु। यथार्थ बताउदा सभामा अन्यान्यराष्ट्रका गुप्तचर आएका हुन्छन् र गुप्तकुरा फैलिने डर हुन्छ। दैवज्ञले आफ्नो विचारबाट यात्रा गर्न हुने देखेमा, एकान्तमा राजालाई यथार्थ कुरा सुनाउनू। यात्रा गर्न नहुने ठहराएमा मन्त्रीलाई एकान्तमा यथार्थ कुरो बताउनू। मन्त्रीलाई बताएमा राजाको यात्रालाई रोकदछन्, जसबाट उत्साह भङ्ग हुन पाँउदैन।

## [2] दिक्शूलमा यात्रागरे के हुन्छ ?

यात्रामा वार-नक्षत्र क्षूलको विचार अवश्य गर्नु पर्दछ। सानो तिनो यात्रामा र अत्यावश्यक काम परेमा, यो वार वा यो नक्षत्रमा-यस दिशामा यात्रा गर्दा यो चिज खानु वा स्पर्श गर्नु भन्ने दोहद पनि आचार्यहरूले लेखेका छन्। नक्षत्रशूलका बारेमा आचार्यले यस्तो लेखेको छ। ज्येष्ठा नक्षत्रमा दानवराज बलिले पूर्वदिशातिर यात्रा गरेको हुनाले भगवान् वामनका बन्धनमा पर्नु पर्‍यो। पूर्वाभाद्र नक्षत्रमा मुरनाम दैत्यले दक्षिणदिशातिर यत्रा गरेकाले भगवान् मुरारिद्वारा मृत्यु प्राप्त गर्‍यो, रोहिणी नक्षत्रमा नमुचिदैत्यले पश्चिम दिशाको यात्रा गरेकाले इन्द्रले धूलो पीठो पारे। उत्तरा फाल्गुनी नक्षत्रमा शंवरासुरले उत्तरदिशाको यात्रा गरेको हुनाले कामदेव (प्रद्युम्न) का हात बाटमर्न पर्‍यो। अतः यात्रामा अरु शूल भन्दा पनि नक्षत्र शूलको विचार आवश्यक मानिएको छ।

१ अथ नृपति समीपे दैववित्पृष्टमात्र:
फलमुदयनिमित्तं स्वकये चक्षास्त्रदृष्ट्या ॥
सदसि सदिति वाच्यं यद्यपि स्यादसत्तत्
स्फुटमपि कथनीयं भुभूजे मन्त्रिणेवा ॥

२ ज्येष्ठायां पुरुहूत दिङ्मुखगत प्राप्तो बलि र्बन्धनं
याम्यामाजपदे मुरश्च गतवान् यातो मुरारेर्वशम् ।
रोहिण्यां नमुचि प्रतिच्यभिसृत: चूर्णिकृतो वज्रिणा
सौम्यामर्यमदैवते च गतवान् मृत्योर्वशं शंबर: ॥



## [1]व्यतिपातले के गर्दछ ?

व्यतिपातयोग दुई प्रकारका हुन्छन्, एक लाट अर्को वैधृत। आगामी व्यतिपातमा कुनै पनि शुभकाम वा धेरै समयलाएर पुरागरिने काम आरम्भ गर्न हुँदैन, यदि गरेमा नोक्सान मात्र हुन्छ। व्यतिपात सुरु भएकै समयमा कुनै कार्य सुरु गरेको छ भने मृत्यु हुन्छ। व्यतिपात समाप्त भएको तत्कालै आरम्भ गरिएको छ भने त्यसबाट शोक-सन्ताप र रोग आदि कष्ट दिन्छ। अतः बुद्धिमान्ले व्यतिपात योग परेको दिन र त्यसका अघि र पछिका एक एक दिन जम्मा तीन दिन विशेष गरेर व्रतबन्ध, विवाह, यात्रा, गृहारम्भ, गृहप्रवेश नगर्नू।

## [2]व्यतिपातको उत्पत्ति

व्यतिपात योगको उत्पत्तिका संबन्धमा आचार्यले यस्तो लेखेका छन्। व्यतिपातयोग पर्ने दिन सूर्य र चन्द्रमा आमुने सामुने बसेर परस्परमा रीसले चूर चूर भएर राता राता आँखाले एकले अर्कोलाई हेर्दछन्। ती दुईको क्रोधपूर्ण दृष्टि संयोगबाट क्रोधाग्नि उत्पन्न हुन्छ। त्यसै आगोबाट निम्नलिखित व्यतिपातको स्वरूप खडा हुन्छ।

१ एष्यो धनं क्षपयत व्यतिपातयोगे
मृत्युं ददाति न चिरादपवर्तमान.
संतापशोकगदविघ्नभयान्यतीत-
स्तमाद्दिनत्रयमपि प्रजहीत विद्वान् ॥

२ रविचन्द्रौ किलतदहनि परस्परं निरीक्षेते।
क्रोधनयनाऽनलभवो दृक्संपर्का त्तयो र्भवति ॥

## [1]व्यतिपातको स्वरूप

व्यतिपातको स्वरूपका बारेमा आचार्यले यस प्रकार लेखेका छन। जस्तै- देख्दैमा डरलाग्दो भयानक शरीर, अत्यन्त अग्लो, कालो कलौटो, किलाजस्ता मुलुक परेका कान भएको, मुखबाई रहने, ठूलो नाक भएको, आँखै छोप्ने लामा लामा आखिभौं भएको, डेरा आँखा, कैलाकपाल देख्दैमा अमङ्गल स्वरूपको छ।

यसै कारणले व्यतिपात योग परेका दिन कुनै पनि विस्तार पूर्वक गरिने काम आरम्भ नगर्नु भनेको हो। यस बारेमा विभिन्न आचार्यहरूले आफ्नो-आफ्नो मत भिन्नता देखाएका छन्। उक्त योगको दोषका बारेमा कसैका मतमा तीन दिन र कसैका मतमा सातदिन देखाएका छन्।

## [2]आचार्यका मतमा व्यतिपातको दोष

अन्य आचार्यहरूले व्यतिपातको दोष तीन दिन वा सात दिन मानेका छन्। यस ग्रन्थका. लेखकले लेखेका छन्, नक्षत्र दूषित भयो भने राशि दूषित हुन्छ, त्यस्तै राशिका दोष बाट नक्षत्र दूषित हुन्छ। यस हिसावले त परस्पर समाश्रय दोषबाट त नवै नक्षत्र दूषित हुने भए। जस्तै- अश्विनि देखि अश्लेषा सम्मका नक्षत्रहरू राशि सम्बन्धबाट जेलिएका छन। जस्तै- मेषराशिका दोषबाट कृत्तिका दोषी हुन्छ, कृत्तिकाका दोषले बृषराशि दूषित हुन्छ, वृष राशिका दोषले मृगशिरा दूषित हुन्छ, मृगशिराका दोषले मिथुन राशि दूषित हुन्छ। पुनर्वसुबाट कर्कटराशि दूषित हुन्छ। यस प्रकार परस्परका दोष संबन्ध बाट नवै नक्षत्र र चारै राशि दूषित हुन्छन्। त्यस कारण न त तीन दिन, न सातै दिन मान्न सकिन्छ। जस्तै- शिकारिले विषमय बाणद्वारा मारेको मृगको मासु, बाणले घाउपारे जति फ्याँकेर अरू शुद्ध- मानेर खान्छन्, त्यस्तै-जति समय सम्म उक्त महाव्यतिपात रहन्छ त्यति समय संममात्र त्यसको दोष लाग्द छ अरु समय दूषित हुँदैन। व्यतिपात बाट तिथि,वार, नक्षत्र कुनै पनि दूषित हुदैनन्।

१ रौद्रौ दीर्घः कृष्ण शङ्कु श्रवणो विदारितास्यश्च।
स्थूलनसो लम्बभ्रूः केकर दृष्टिः कपिलकेशः॥

२ विषप्रदिग्धेन हतस्य पत्रिणा
मृगस्य मांसं शुभदं क्षताद्दते।
यथा तथैव व्यतिपात-दूषितः
क्षणेन पापो न तिथि नं वासरः॥



## [1]यात्राऽऽरम्भ भन्दा पहिले के गर्ने ?

आफ्नो चित्त शुद्ध भयो भन्ने राजालाई लागेपछि राजज्योतिषीलाई यात्राको दिन स्थिरगर्न लगाउनू। ज्योतिषीले दिन दिएपछि यात्रा गर्ने दिन भन्दा एक सप्ताह पहिलेका तीन दिन सम्म गुह्यकयाग गर्नू। तेस पछिका तीन दिन सम्म विजयस्नान गर्नू, सातौं दिनका दिन ग्रहयज्ञ गर्नू।

## [2]के के लिएर को को कहाँ जाने ?

पकाएको र काँचो मासु दही नरिवल जाइफल सुपारी पान पाइने जति सामयिकफल पाइने जति सामयिकफूल नानाप्रकारका आसव शुद्ध धागोलाई वेसारमा रङ्गाएर कुंकुम सस्यूँ गोवर दूबो र नवरत्न युक्त रक्षाबन्धन, मूला, पायस, अपुङ्गो, लड्डु, मालपुवा आदि नाना प्रकारका भक्ष्य, सुगन्धित द्रव्य, कपूर, केशर, सर्वौषधि सहित गुग्गुल आदि धूपले युक्त भएर नयाँ सेतो वस्त्र र सेतै उपर्ना ओढेर उपवास गरेका ज्योतिषी मन्त्री पुरोहित गुरु विश्वस्त मानिस सशस्त्र पदाति ( पल्टन ) यी सबै परिवार लिएर शहरको मुख्य चौबाटोमा जानू।

## [3]उक्त स्थलमा कुनवेला जाने र के गर्ने ?

तात्कालीनलग्नमा बुध, मङ्गल बसेका अथवा बुध-मंगलका नवांशमा वा मेष, मिथुन, कन्या, वृश्चिक मध्ये कुनै लग्नमा मध्यरातमा उक्तस्थलमा जानू। पुरोहितले शास्त्रा- नुसार मण्डपादि बनाएर विधिपूर्वक पूजागरे पछि पूर्वदिशाबाट आरम्भ गरेर, पूर्व, आग्नेय, दक्षिण, नैर्ऋत्य, पश्चिम, वायव्य, उत्तर, ईशान, यी आठै दिशामा बलिदिनू।

१ यात्राऽर्वाक् सप्ताहाद् गुह्यक सहाय्यकं त्र्यहं पूर्वम्।
त्र्यहमथ विजयस्नानं ग्रहयज्ञं सप्तमे दिवसे ॥

२ पक्वाममांसदधिफलकुसुमासवपायसप्रतिसराभिः।
मूलकभक्ष्यैर्गन्धैर्गुग्गुलमुख्यै स्ततो धूपैः ॥
सांवत्सरसचिवपुरोहितासपुरुषायुधीयपरिवाराः।
यायात्ररचतुःपथममुक्तवस्त्रोत्तरीयाङ्गः ॥

३ अर्द्धनिशायामुदयति सौम्ये वक्रेऽथवा तदंशे वा।
दद्याद्बलिं दिशासु पुरोहितः क्रमशः ॥

## [1]बलि कस कसलाई दिने

राजधानिको मूलढोकामाबस्ने देवगणलाई सर्व प्रथम बलिदिनू, तीन बाटो जोडिएका ठाउँमा बस्ने देवगणलाई, चौबाटोमा बस्ने देवगणलाई, ठूला ठूला राजदरबारका अट्टालीमा बसेका देवगणलाई, शहरका कुना काप्चामा बसेका देवगणलाई, बगैंचामा बसेका देवगणलाई, अथवा त्यस त्यस स्थानका अधिष्ठाता देवगणलाई, बलिदिनू, त्यस्तै- ठूला ठूला राजमार्गमा बस्ने देवतागण, नदीका तीरमा बस्ने देवतागण, गुफामा बस्ने नाना आकारका ठूला-ठूला देवतागणलाई, प्रशस्त शक्ति भएका शूरा, ठूला तपस्वी, प्रमथगणले श्रद्धापूर्वक दिइएको उपहार बलि ग्रहण गर्नु होस। हे देवगण ? तपाईंहरुलाई म नमस्कार गर्दछु भनेर बार बार नमस्कार गर्नु पर्दछ।

## [2]यात्राबाट फर्किएपछि के गर्ने ?

हे देवगण ? विजय यात्रामा जान लागेका हाम्रा राजाका परिवार र राज्यको रक्षा गर्नु हवस भनेर पुरोहितले प्रार्थना गर्नू।

राजाले हात जोडेर हे देवगण ! नाना रूपलिएर मेरा सेनाका अघि-पछि लागेर आउनु हवस। तपाँइहरुका प्रसादले सारा शत्रुलाई जितेर राजधानीमा फर्किएपछि विशेष बलि उपहार गर्ने छु। मेरो यात्रा सफल पार्नलाई सहायता गर्नु हवस, भनेर राजाले बार बार प्रार्थना गर्नू।

---

१ द्वारत्रिकचतुष्काट्टपुरनिष्कुटवासिनः।
महापथनदीतीरगुहागह्वरवासिनः ॥
विश्वरुपा महारुपा महासत्वा महाव्रताः।
प्रमथाः प्रतिगृह्णीध्वमुपहारो नमोऽस्तु वः ॥

२ निवृत्त मात्रः पुनरप्यहं हि भो
विजित्य शत्रुं भवतां प्रसादात्।
अतो विशिष्टं बहुवित्तमुत्तमं
बलिं हरिष्ये विधिनोपपादितम् ॥



## [1]ग्रहयागमा के के गर्ने ?

पहिले अप्रतिरथ मन्त्र जसमा यात्राका सम्बन्धलाई विशेष शङ्केत गर्ने। जस्तै- सामवेदको छैटौं प्रपाठको "आमन्द्रै रा" इत्यादि २७-२८-२९ मन्त्र। अभयगण शुक्लयजुर्वेद संहिताको ३६ सौं अध्याय। अपराजित सामवेद उत्तरार्चिको ६, १, ३, १"उत्वामदन्तु सो हो मा। शर्ममन्त्र सामवेद अरण्यगानको षष्ठ प्रपाठक,द्वितीय अध्यायको"वाङ्मनः प्राणः प्राणः" इत्यादि १७ मन्त्र। वर्ममन्त्र शुक्लयजुर्वेद संहिता १७अध्यायको ४९ सौं मन्त्र "मर्माणितेवर्मणाच्छादयामि" इत्यादि। स्वस्त्ययन मन्त्र "स्वस्तिन इन्द्रो वृद्धश्रवाः" इत्यादि शु. य. वे.। उपर्युक्त पाँचैगणले पहिले हवन गर्नू। त्यस पछि भूतगण सामवेद ६ प्रपाठको २३ सौं मन्त्र "हाउ हाउ हाउ भूता ओवा" इत्यादि। "यत्रो सोम दिवि" शुक्ल यजुर्वेद सं. ६ अध्या. २३ सौं मन्त्र। इन्द्रगण ऋग्वेद संहिता अ. २ वर्ग ७ को "यो जात एव प्रथमो" इत्यादि ५ मन्त्र। चन्द्रगण सामवेद संहिताको ३१, १, ३२-३४ मन्त्र "चन्द्रमा आ उ वा.प्सवान्ता उ वा" इत्यादि ४ मन्त्र र अरु आशीर्वाद मन्त्र पढेर हवन गर्नू। यस प्रकार विधिपूर्वक प्रस्थान गर्ने राजाको यात्रा विफल कहिल्यै पनि हुँदैन। यति काम समाप्त भएपछि पुरोहितले अग्निको प्रार्थना गर्नू। हे अग्नि राजालाई दिव्यदृष्टि देऊ, बल देऊ, तेज देऊ, हे हव्यवाह ? जसो गरी तपाँइ अजेय हुनु हुन्छ त्यस्तै हाम्रा राजालाई पनि अजेय गरि दिनु हवस। यस्ता प्रकारको प्रार्थना सके पछि अब म अग्निको परीक्षा गर्दछु र शुभाशुभ बताउने छु भनेर यज्ञबाट राजालाई विदा दिनू।

---

१ ततोऽप्रतिरथं कृत्स्नं यात्रालिङ्गञ्च यद् भवेत्।
आयुष्यमभयं चैव सर्वं चैवापराजितम् ॥
शर्म वर्म गणं चैव तथा स्वस्त्ययनं गणम्।
एतान् पञ्चगणान् हुत्वा संस्थाप्याग्निं यथाविधिः ॥
भूत भूतेति च गणो यो चन्द्र स्तथैव च।
ऐन्द्रोगण स्तथा चान्द्रो मन्त्राशीः सूक्तमेव च ॥
भूयो भूय स्तथा ज्वालां संस्पृश्याथ पुरोहितः।
स्पृशेच्च नृपतिं मन्त्रै रुच्चै र्भूयात् पुनः पुनः ॥

## [1]यात्राको आरम्भ कहाँबाट गर्ने ?

यात्राका समयमा अष्टदिक्पालको पूजा र ध्यान गर्नू । जस्तै– पूर्वदिशामा इन्द्र र सूर्यको, आग्नेयमा अग्नि र शुक्रको, दक्षिणमा यमराज र मङ्गलको, नैर्ऋत्यमा राहु र राक्षसको, पश्चिममा वरुण र शनिको, वायव्यमा वायु र चन्द्रमाको, उत्तरमा कुवेर र बुधको, ईशानमा रुद्र र बृहस्पतिको ध्यान र पूजा गरेर, सेतो छाता सेतो चमर लिएका व्यक्तिले युक्त भएर, वन्दिजनले गाँउदै, ब्राह्मणले वेदध्वनि गर्दै, जय जय शब्दले गुञ्जायमान पार्दै, प्रस्थान शुरु गर्नू । कल्याण नाम भएका मन्त्रीहरू, जस्तै जयराज, विजयराज, संग्रामराज, व्याघ्रराज, रणशार्दूल, जयसिंह इत्यादि र आत्मीयजन शस्त्रधारी पुरुषहरू, दैवज्ञ चोपदारहरुका वीचमा वसेर, आफ्नो निवास स्थान वा देवमन्दिर अथवा प्रधानपट्ट महिषीका निवासस्थान वा गुरुको निवासस्थान-बाट यात्रा शुरु गर्नू । यात्रा शुरु गर्दा सर्व प्रथम दाहिने पाउ पहिले चालनू । वत्तिस कदम सम्म पैदलै गएर, पूर्वदिशाको यात्रा भएमा हात्तीबाट, दक्षिणदिशाको भए रथबाट, पश्चिम-दिशाको भए घोडाबाट, उत्तरदिशाको भए नरयानबाट यात्रा शुरु गर्नू । सवारीमा चढने समयमा तिलपात्र दान गर्नु र ब्राह्मण सित अनुमति लिएर सवारीमा चढनू ।

## [2]राजधानीमा बस्ती कसरी वसाल्ने ?

मुख्य राजधानीको पूर्व भागमा राजदरवार बन्नु पर्दछ, आग्नेयकोणमा राजकुमारको निवासस्थान, दक्षिणमा सेनापतिको, नैर्ऋत्यकोणमा दूतावास र सचिवको निवासस्थान, पश्चिम-मा धनी मानिसहरुको, वायव्यकोणमा मुख्य गुप्तचरको, उत्तरदिशामा पढे लेखेका विद्वानहरुको,

१ कल्याणनामसचिवातजनाऽऽयुधीया
दैवज्ञविप्रजनकञ्चुकि मध्यसंस्थः ।
द्वात्रिंशतं समुपगत्य पदानि भूमौ
प्रागादि नागरथवाजिनरैः प्रयायात् ॥
स्वनिकेताद्देवगृहात्प्रधानदाराश्रयाद्गुरुगृहाद्वा ।
यायात् कृताग्निकार्यः प्राश्यहविश्यं द्विजानुमतः ॥

२ राजा कुमारो नेता च दूतः श्रेष्ठी चरो द्विजः ।
गजाध्यक्षश्च पूर्वाद्याः क्षेत्रीयाद्या श्चतुर्दिशम् ॥



ईशानमा हात्तीशालाको मुख्य हाकिमको निवासस्थान हुनु पर्दछ । साधारणतया पूर्वमा क्षत्रीय-हरू, दक्षिणमा वैश्यवर्ग, पश्चिममा शूद्रजाती, उत्तरमा ब्राह्मणजाती ।

आठ दिशाको ३२ भेद हुन्छ, जस्तै– पूर्वोक्त ८ दिशा र निम्नलिखित २४ मिलाएर ३२ भेद मानेको हो । जस्तै– पूर्व र आग्नेयकोणका वीचमा कोपाध्यक्ष, अग्निका सम्बन्धबाट जीवीका चलाउने जस्तै– सुनार, कौ र बिजुलीका कामदारहरू, तपस्वीहरू । आग्नेय र दक्षिणका वीचमा शिल्पी ( कलाकार ) भिक्षु, नाचगान गर्ने स्त्रीहरू । दक्षिण र नैर्ऋत्यका बीचमा मदमत्त हात्ती, गाईको गोठ र गोठाला, धार्मिक पुरुषहरू । नैर्ऋत्य र पश्चिमका वीचमा स्त्रीहरू सूतिका-गृह, चोरहरू । पश्चिम र वायव्यका वीचमा मादक वस्तुका व्यापारी, चराचुरुङ्गीका व्यापारी र माझी, शिकारीहरू र रिसाहाहरू । वायव्य र उत्तरका वीचमा विषप्रयोगगर्ने, गाईका गोठ, इन्द्र-जाल आदि नया नया खेल तमासा देखाउने । उत्तर र ईशानका वीचमा धनी-मानि व्यक्तिहरू ज्योतिषी माली, ईशान र पूर्वका वीचमा विष्णुका भक्त, कुमालेहरू चामल र पीठो आदि कुटने पिधने व्यवसायीहरू र घोडशालाको हाकिमको निवासस्थान हुनु पर्दछ ।

संक्षेपमा केही विषयको परिचय गराउनका साथै, यस ग्रन्थमा यात्राकालनिर्णय, यात्रा लग्नको विचार, शुभाशुभयोग, तिथिवारनक्षत्रादिको विचार, ग्रहफलको विचार, चन्द्रमा-को बलावल विचार गोचरफल, व्यतिपातको विचार, गुह्यकपूजा दुःस्वप्न, सुस्वप्नको विचार, विधिपूर्वक विजयस्नानको वर्णन, ग्रहयज्ञको वर्णन, अग्निलक्षण, प्रस्थान-सम्बन्धि निर्णय, हात्तीको शुभाशुभ लक्षण, घोडाको शुभाशुभ लक्षण, शुभाशुभ शकुनको विचार. श्याल र श्यालिनीको रुवाइबाट हुने शुभाशुभको विचार, काकको शब्दबाट हुने शुभा-शुभको विचार, कुकुरको चेष्टाबाट हुने शुभाशुभको विचार । बाटाको लक्षण यात्रा शुरु-भएपछि कस्ता जमीनमा बस्ने, वासभूमिको लक्षण । वायु, मेघ, वर्षा, इन्द्रधनुष, वज्र, उल्का, भूकम्प, संध्या, परिवेष, नीहार, पांशु, गन्धर्वनगर आदिको लक्षण र यात्रामा चाहिने विषयहरुको यस ग्रन्थमा विशेषरुपले वर्णन गरिएको छ ।

## ग्रन्थकारपरिचय

श्री वराहमिहिराचार्यले आफ्नो कुल र निवासस्थानका वारेमा बृहज्जातकको उप-संहाराऽध्यायमा आफैले लेखेका छन् ।

जस्तै :—

आदित्यदासतनय स्तदवाप्तबोधः
१कापित्थके सवितृलब्धवरप्रसादः ।
आवन्तिको मुनिमतान्यवलोक्य सम्यग्-
घोरां वराहमिहिरो रुचिरां चकार ॥

श्रीवराहमिहिरले आफ्ना पिताको नाम आदित्यदास भनेर स्वयं लेखेका छन् । गुरु पनि पितानै हुनुहुन्थ्यो भन्ने पनि लेखेका छन् । रुद्र भन्दा अतिरिक्त टीकाकारहरूका मतमा आचार्यले कापित्थ भन्ने ठाउँमा सूर्यदेवको तपश्चर्या गरेर वर तथा प्रसाद पाए भन्ने छ । तर रुद्रको भनाई यो छ कि आचार्यले तपश्चर्या गरेको स्थानको नाम लेखेको हैन आफ्नो गोत्र लेखेको हो भन्ने छ । आचार्य उज्जयिनीका निवासी हुन् भन्ने पनि उक्त श्लोकबाट स्पष्ट हुन्छ । तर आचार्यले आफ्नो जन्म समयको बारेमा लेखेको लेख केही पाइदैन । आचार्यले लेखेका ग्रन्थहरू निम्नलिखित देखिन्छन् ।

(१) पञ्चसिद्धान्तिका — — — मुद्रित
(२) बृहज्जातक — — — ,,
(३) लघुजातक — — — ,,
(४) बृहत्संहिता — — — ,,
(५) योगयात्रा — — — अमुद्रित
(६) अश्वमेधीययात्रा — — — प्रस्तुत ग्रन्थ
(७) दिक्किनिकयात्रा — — — अमुद्रित
(८) विवाहपटल — — — ,,
(९) पृथुयशोऽभिधानम् — — — ,,
(१०) समासयात्रा — — — ,,
(११) समाससंहिता — — — ,,

१ कपिष्ठिला औपलोमा अलब्धा श्च षठाः कठाः ।
मत्स्यपुराण अध्याय १९९ ।
कपिष्ठिल गोत्रीयः । बृहज्जातकका टीकाकार रुद्रको भनाई छ ।
रुद्रले 'कापिष्ठले' यस्तो पाठ पढेका छन् ।



उपर्युक्त पुस्तकहरू मध्ये १०, ११ संख्याका पुस्तक ['समास यात्रा' र समास संहिता] बाहेक अरु पुस्तक हेर्ने मौका यी पङ्क्तिका लेखकले पाएको छ । उपर्युक्त पुस्तक द्वय त भट्टोत्पलले आफ्ना टीकामा उद्धृत गरेका र अन्य ग्रन्थकारहरूले उद्धृत गरेका मात्र फेला परेका छन् र त्यसैका आधारमा आचार्यका उक्त पुस्तक द्वय पनि अवश्य छन् भन्ने विश्वास गरिएको हो ।

आचार्य वराहमिहिर आफ्ना समयका प्रसिद्ध ज्योतिषी थिए र यिनका ग्रन्थ तीनै शाखामा (संहिता, सिद्धान्त, होरा) पाइन्छन् । यिनले आफ्नो जन्मकाल स्पष्ट लेखेको छैन तापनि आफ्नो करण ग्रन्थ पञ्चसिद्धान्तिकामा गणित आरम्भवर्ष शाके ४२७ मानेका छन् । यदि पञ्चसिद्धान्तिका ४२७ मा नै लेखेको भए यिनको जन्म शाके ४०७ को लगभग हुनु पर्दछ । किन कि २० वर्ष भन्दा कम उमेरकाले यस्तो ग्रन्थ रचनागर्न असम्भव छ । ज्योतिषशास्त्रका इतिहासकारहरूको मत पनि यही नै देखिन्छ ।

## ग्रन्थरचना हेतु

श्रीवराहमिहिरले विभिन्न विषयका ग्रन्थ लेखिसकेपछि यात्राका सम्बन्धमा पनि योगयात्रा-दिक्किनिक यात्रा र समासयात्रा लेखे । वैदिककाल देखि चलिआएको वेदविहित यज्ञगर्दा पनि दिग्विजययात्रा गरिन्छ । तर यस बारेमा कुनै ठोस ग्रन्थ नदेखिएकाले 'अश्वमेधीय यात्रा' भन्ने ग्रन्थ लेखे । यसको आरम्भमानै लेखेका छन् ।

जस्तै :—

यस्त्वेऽश्वमेधेन विजित्य धात्री-
मित्येवमभ्युद्यमिनो नृपस्य ।
विनिघ्नतो विघ्नकरांश्च पापं
क्रिया क्रमेणैव पशून् मखेषु ॥

आचार्य हिंसागर्दा पाप लाग्द छ भन्ने जनसाधारणका मनमा उठने शङ्कालाई पन्छाउदै लेखदछन् । जुन राजा समस्त पृथ्वीलाई जितेर त्यसबाट उपलब्ध भएका धनले र आफ्नो संपत्ति मिलाएर अश्वमेध यज्ञ गर्दछु भन्ने प्रतिज्ञागर्दै, दिग्विजय यात्रा गर्दछ,

त्यस यात्राका बाधकहरुलाई पन्छाउँदा हुनगएको हिंसालाई हिंसा भनिदैन । वेदले पनि वैदिक हिंसालाई हिंसामानेको छैन ।

वेद भन्दछ कि "सार्वभौमो यजेत" सार्वभौम राजाले अश्वमेध यज्ञ गरोस भन्ने वेदको भनाई छ । यज्ञ त गरोस तर संपत्ति खै ? यसै निमित्त शास्त्रनै आज्ञादिन्छ । "अश्वमेधाख्य यागस्य संपत्त्यर्थं राज्ञा पृथ्वीविजयः कर्तव्यः" । अतः साधारण धनले न पुग्ने भएकाले अश्वमेध यज्ञका निमित्त धन संग्रहार्थ राजाले दिग्विजय यात्रा गरोस् । यो कार्य शास्त्र सम्मत भएकाले र यस विषयको यात्राका निमित्त आफू भन्दा पूर्वका आचार्यहरूको स्वतन्त्र ग्रन्थ नभएकाले यो ग्रन्थ लेखिएको हो ।

यस यज्ञको मुख्य हवनीय द्रव्य घोडा हुनाले त्यस घोडालाई दिग्विजय यात्राको मुख्य अङ्ग बनाएर त्यसैका सारमा त्यसका संरक्षकहरू हिंडदछन् । श्रीरामचन्द्रले अश्वमेध यज्ञ गर्दा घोडा छोडेको वेहोरा यस प्रकारको छ ।

जस्तै :—

कुंकुमादिकगन्धाढ्ये सर्वशोभासमन्विते ।
बबन्ध भास्वरं पत्रं तप्तहाटकनिर्मितम् ॥
तत्रालिखद्दाशरथेः प्रतापबलमूर्जितम् ।
सूर्यवंशध्वजो धन्वी धनुर्दीक्षागुरोर्गुरुः ॥
यं देवाः सासुराः सर्वे नमंति मणिमौलिभिः ।
तस्यात्मजो वीरवरदर्पहारी रघूद्वहः ॥
रामचन्द्रो महाभागः सर्वशूर शिरोमणिः
तन्माता कोशल–नृप–पुत्री रत्नसमुद्भवा ॥
तस्याः कुक्षिभवं रत्नं रामः शत्रुक्षयङ्करः ।
करोति हयमेधं वै ब्राह्मणेन सुशिक्षितः ॥
रावणाख्य ब्रह्मरक्षोवधपापापनुत्तये ।
मोचितस्तेन वाहानां मुख्योऽसौ वाजिनां वरः ॥



महाबल परिवार परिखाभिः सुरक्षितः ।
तद्रक्षकोऽस्ति तद्भ्राता शत्रुघ्नो लवणान्तकः ॥
हस्त्यश्वरथपादातसङ्घःसेनासमन्वितः ।
येषामित्यभिमानोऽस्ति राज्ञामहमिकायुजाम् ॥
शूरा वयं धनुर्धारीश्रेष्ठा वयमिहोत्कटाः ।
ते गृण्हन्तु बलाद्वाहं रत्नमालाविभूषितम् ॥
मनोवेगं काम जवं सर्वगत्यविभास्वरम् ।
ततो मोचयिता भ्राता शत्रुघ्नो लीलया हटात् ॥

रामाश्वमेध अ. १०
रा. अ. ते. १५६

नानाशृङ्गारका सामानले सिगारेर कुंकुमादि सुगन्धित वस्तुले युक्त शोभायमान यो घोडाका ललाटमा राख्ने सुवर्णपत्रमा रामचन्द्रको बल पराक्रम आदि विवरण यस प्रकार लेखिएको थियो ।

सूर्यवंशका ध्वजा धनुर्धारीका गुरुका पनि गुरु, देवता र राक्षसहरूले नतमस्तकभै ढोगिने यस्ता दशरथका छोरा वीरवर घमण्डीका घमण्डलाई चूर चूर पार्ने रघुकुलमणि शूर वीरका शिरोमणि कोसल देशकी राजकुमारी कौशल्याका पुत्र शत्रुहरूका निमित्त कालस्वरूप रामचन्द्र, ब्राह्मणका शिक्षाले सुशिक्षित भएर रावण नामको ब्रह्मराक्षस मार्दा लागेको पाप पखालनलाई अश्वमेध यज्ञ गर्दछन् । अतः रामले सबै घोडा भन्दा श्रेष्ठ यो घोडा छोडेका छन् । यसलाई सशस्त्र सेना र शस्त्रधारी ठूला ठूला वीरहरूले रक्षा गरिएको छ । यसका मुख्य रक्षक लवणासुरलाई मार्ने मेरा कान्छा भाई शत्रुघ्न छन् । जसलाई म पनि राजा हुँ, वीर हुँ, धनुर्धारी हुँ, हामी को भन्दा कम छौं भन्ने घमण्ड छ, त्यसले आफ्नो इच्छानुसार हिंड्ने सबै भन्दा उत्तम रत्नहारले सुशोभित यस घोडालाई समातोस् । त्यसलाई भाई शत्रुघ्नले सजिलै सँग छुटाउने छन् । भन्ने लेखिएको थियो । यो यज्ञ जसले गर्दछ आफ्नो प्रशस्ति लेखेर छोडिने घोडाका ललाटमा राखद छ ।

यस प्रकारले छोडेको घोडा घुम्दै फिर्दै जब अर्को राज्यमा पुग्दछ, घोडाको ललाटमा

लेखिएको प्रशस्ति पढेपछि जसले लेख्ने राजाको अधीनता स्वीकार गर्दछ त्यो स्वागत गर्न आउँछ । जसले अधीनता स्वीकार गर्दैन त्यसले उक्त घोडा समातेर बाँधी दिन्छ । दुवै पक्षको युद्ध हुन्छ । लडाँईमा जितेर घोडा फर्काएर ल्यायो भने यज्ञ पूरा हुन्छ । शत्रु पक्षको जित भयो भने यज्ञ पूर्ण हुँदैन । यस्ता हिसावले पृथ्वी भर घुमाएर ल्याइयेको त्यो घोडा नै अश्वमेध यज्ञको हव्य द्रव्यको साधन हुन्छ ।

यसरी लगातार १००। सय अश्वमेध यज्ञ पूर्ण भए पछि इन्द्र हुन्छ भन्ने शास्त्रमा लेखेको छ । त्यसैले इन्द्रलाई शतक्रतु भन्दछन् । राजा सगरले ९९ सम्म यज्ञ पूर्ण गरे पछि १००। यज्ञका निमित्त घोडा छोडे । त्यस घोडालाई अरु कसैले समात्न नसकेकाले सगरले १००। यज्ञ पूर्ण गरे भने इन्द्रासन खोस्ने छन, भन्ने डरले स्वयं इन्द्रले घोडा चोरेर कपिलमुनिका आश्रममा लगेर बाँधि दिए भन्ने पुराणमा पाइन्छ ।

जस्तै :—

सगर श्चक्रवर्त्यासीत्सागरो यत्सुतैः कृतः ।
सोऽश्वमेधैरयजत सर्ववेदसुरात्मकम् ॥
और्वोपदिष्टमार्गेण हरिमात्मनमीश्वरः ।
तस्योत्सृष्टं पशुं यज्ञे जहाराश्वं पुरन्दरः ॥

भागवत ९ स्कं. अ. ८ ।

कालिदासले रघुवंशमहाकाव्यमा लेखेका छन् । दिलीपले ९९ अश्वमेध यज्ञ समाप्त गरेपछि १००। सयौं यज्ञ गर्दा छोडिएको घोडालाई यज्ञ पूर्णगर्लो भन्ने डरले इन्द्रले चोरेर लगे । घोडाका संरक्षक राजकुमार रघुले आफ्नो घोडा इन्द्रले लगेको देखेर इन्द्रलाई भन्दछन् ।

जस्तै :—

त्रिलोक नाथेन सदा मखद्विषस्त्वया नियम्या ननुदिव्यचक्षुषा ।
स चेत् स्वयं कर्मसु धर्मचारिणां त्वमन्तरायो भवसि च्युतो विधिः ॥



रघु भन्दछन् हे त्रिलोकनाथ तपाँई जस्ता दिव्यदृष्टि भएकाले यज्ञ ध्वंस गर्नेहरूलाई दण्ड दिनु पर्नेमा, आफै यसरी यज्ञ विघ्न गर्नेलाई अघि सर्नु हुन्छ भने भो ? अब धर्म कर्म संसारबाट विदा हुने भयो ।

इन्द्र भन्छन् :—

यदात्थ राजन्यकुमार तत्तथा
यशस्तु रक्ष्यं परतो यशोधनैः ।
जगत्प्रकाशं तदशेषमिज्यया
भवद्गुरुर्लङ्घयितुं ममोद्यतः ॥
हरिर्यथैको पुरुषोत्तमः स्मृतः
महेश्वरस्त्र्यम्बक एव नापरः ।
तथा विदुर्मांमुनयः शतक्रतुं
द्वितीयगामी नहि शब्द एष नः ॥

रघुवंश तृतीयसर्गः ।

हेराजपुत्र तिमीले जो भन्यौ त्यो सबै ठीक छ, तर म जस्ता कीर्तिनै धनभएकाले आफ्नो कीर्त्तिलाई अर्काबाट बचाउनु पर्दछ । किन कि यज्ञ द्वारा लोकप्रसिद्ध मैले कमाएको शतक्रतु (१०० सय अश्वमेध यज्ञ गर्ने) भन्ने मेरो कीर्ति हो त्यसलाई तिम्रा पिता दिलीपले छोपि दिन लागे । आज सम्म पुरुषोत्तम भनेर नारायणलाई र त्र्यम्बक भनेर महादेवलाई, त्यस्तै शतक्रतु भनेर मलाई मात्र भनिन्छ, उपर्युक्त नामले हामी तीनलाई बाहेक अरु कसैलाई बुझाउदैन । अतः आफ्नो कीर्तिको रक्षाका निमित्त मैले तिम्रो घोडा लगेको हुँ अब तिमी जाउ भनेर घोडा लगे । यस प्रकार वैदिक काल देखि यो यज्ञ बराबर चल्दै आएको छ । युधिष्ठिरले गरेको अश्वमेधको वर्णन महाभारतमा सिंगै एक पर्वछ । पछि आएर राजा शूद्रकले अश्वमेध यज्ञ गरेर १००। सय वर्ष १० दिन बाचेर अग्निप्रवेश गरे भन्ने पाइन्छ ।

जस्तै :—

ऋग्वेदं सामवेदं गणितमथ कलां वैशिकिं हस्तिशिक्षां
ज्ञात्वा शर्वप्रसादाद् व्यपगततिमिरे चक्षुषी चोपलभ्यः ।

राज्ञानं वीक्ष्य पुत्रं परमसमुदयेनाश्वमेधेन चेष्ट्वा
लब्ध्वा चायुः शताब्दं दशदिनसहितं शूद्रकोऽग्निं प्रविष्टः ॥

मृच्छकटिक अं. १ श्लो. ४

त्यस्तै पुष्यमित्र, समुद्रगुप्त ले पनि अश्वमेधयज्ञ गरे भन्ने इतिहासकारहरूले लेखेका छन् । समुद्रगुप्त पछि यो यज्ञ कसैले गरेको लेख देखिएको छैन ।

## उपसंहार

यसरी आदिकालदेखि चलिआएको यज्ञका निमित्त शुद्ध यात्रा गर्नेलाई शास्त्र संमत साहित दिएमा मात्र यात्रा सफल हुन्छ । यात्रा सफल भए पछिमात्र यज्ञ गर्न सकिन्छ भन्ने विचार आचार्यका मनमा उठ्यो र यो ग्रन्थ लेखियो । अब पनि पृथ्वी निर्वीर भएकी छैनन् र उत्साही राजाहरू जन्मलान् र आफ्नो अतीतको गौरव र संस्कृतिको अध्ययन गर्ने मौका पाउने छन् भन्ने विचारले यो ग्रन्थ प्रकाशित गरेको हो ।

## अनुरोध

अश्वमेधीय यात्राका बारेमा जो संक्षिप्त दिग्दर्शन गरियो त्यो पाठक वर्गका सामुने नै छ । दुःखको कुरो यो छ कि उक्त ग्रन्थको १३ रौं अध्यायको अन्तिमभाग र १४, १५, १६ अध्याय तथा ३४ सौं अध्यायको अन्तिम अंश र ३३ सौं अध्याय र ३४ सौं अध्यायको पूर्व भाग टुट छ । उक्त अंश वा पूरा पुस्तक जुन महानुभावसित छ वहाँले सार्न वा राष्ट्रियअभिलेखालयलाई कुनै शर्तमा दिनु भएमा अभिलेखालयले हार्दिक धन्यवादका साथ स्वीकार गर्ने छ र उचित पुरस्कारको पनि व्यवस्था गर्ने छ ।

विनीत :—
देवीप्रसाद लंसाल

# अश्वमेधीययात्रास्थविषया ऽनुक्रमणिका

विषयाः | पृष्ठाङ्काः

## ४ नक्षत्र विजया ऽ ध्याये



## ५ ग्रहदिवसफला ऽ ध्याये



## ६ मुहूर्ता ऽ ध्याये



## ७ चन्द्रबला ऽ ध्याये



## ८ लग्नबला ऽ ध्याये



## ९ लग्नभेदा ऽ ध्याये

## १० ग्रहशुद्धि नामाध्याये



## ११ उत्सर्गा ऽ पवादा ऽ ध्याये



## १२ व्यतिपाता ऽ ध्याये







## १३ मिश्रकाऽध्याये



## १७ गुह्यकसहाया ऽ ध्याये



## १८ स्वप्ना ऽ ध्याये

## २६ शिवारुताऽध्याये



## २७ वायसविरुताऽध्याये



## २८ श्वेङ्गित[illegible]याये



## २९ मङ्गलाऽमङ्गलाऽध्याये



## ३० शकुनोपदेशाऽध्याये



## ३१ निवेशलक्षणाऽध्याये



## ३२ उत्पाताऽध्याये



## ३३ परदुर्गालंभनोपायाऽध्याये

# अश्वमेधीययात्रा

श्रीगणेशाय नमः

अथात्र वराहमिहिराचार्यः, उभयलोकजिगीषुं राजानमुद्दिश्य सर्ववर्णानां यात्राकाल-फलप्रदं वक्ति।

राज्ञः प्रजापालनं धर्म स्तथा सांवत्सरपुरोहितयोरपि। तत्र दैवपुरुषाकारौ सांवत्सरेण ज्ञातव्यौ।

विवृतिः- दैवस्याऽशुभस्य दैवज्ञानुमतशान्त्यादिनोपघातः पुरोधसा कर्तव्यः। स्वाम्य-मात्यजनपदकोशदुर्गदण्डानां ये परिपन्थिनस्तेषां राज्ञा साम- भेद-दान-दण्डादिना पुरुषकारेण च निग्रहो दैववित्पुरोहितमंत्र्यनुमत्या कर्तव्यः। पुरुषचतुष्टयस्यायत्तं प्रजापालनं वर्णयन्ति नीतिज्ञाः दैव(ज्ञ)पुरोहितयोर्मन्त्रिपार्थिवयोश्च दैवज्ञेन दैवं ज्ञेयम्। पुरोधसा तदनुष्ठानं कर्तव्यम्, मंत्रिणा पौरुषं ज्ञेयम्, राज्ञा तदनुष्ठानं कर्तव्यम्। तत्र प्रायः शास्त्रकाराणां दैवज्ञव्यतिरिक्तो ऽन्योमन्त्री नाभिप्रेतः। यस्माज्ज्योतिशास्त्रमजानन्सामभेदप्रदानदण्डानां सिद्धिकालं न जानाति, तेषां सिद्धिर्म्हवलायत्ता।

तदुक्तं-

साम्नो जीवः सभृगुतनयो दण्डनाथौ कुजार्कौ
दानस्येन्दुः शिखियमबुधाःसासुरा भेदनाथाः।
वीर्योपेतै रुपचयकरै र्लग्नगैः केन्द्रगैर्वा
तत्तत्सिद्धिं व्रजति तदहः स्वांशके वापि तेषाम्,॥ इति॥

सामाद्यधिपतौ बलवति तत्तत्सिद्धि र्भवति। तद्बलं च दैवविदेव जानाति। तथा च सन्धिविग्रहदानदण्डद्वैधीभावसंश्रयाणां षड्गुणानां प्रयोजनसिद्धि र्म्हवलायत्तैव।

तदुक्तं–

यानं यायिभि रासनं शुभकरै र्वीयान्वितैर्नागरै –
द्वैधीभाव मियाद्यदा शुभकराः पौराः सयायिग्रहाः ।
सौम्यैः सन्धिरसद्ग्रहैश्च बलिभिर्युध्देऽनुकुले जयः
सर्वैरप्यशुभप्रदै र्नरपति र्दैवान्वितं संश्रयेत् ॥ ॥ इति ॥

उक्तञ्च—

अटविकदेशरिपुमित्रमौलिभृतकश्रे णिवीर्येशाः ।
सूर्यादयोऽनुकूलै स्तदुदयवर्गैश्च तत्सिद्धिः ॥ इति ॥

तस्माद्दैवविदेव मुख्यमंत्रीति । यत स्तस्यैव दैवपुरुषज्ञानमायत्तं, पुरोहितस्य तु दैवस्याऽशुभस्य शान्त्या निवारणं, तदुपघातश्च । पुरुषकारविभ्रमस्य राज्ञोऽन्ये पुनः पुरुषद्वयस्याऽऽयत्तं राज्यं वर्णयन्ति । ब्राह्मणस्य क्षत्रियस्य च यतो ब्राह्मणेनैव मंत्रित्वं सांवत्सरत्वं पुरोहितत्वं कर्तव्यं, क्षत्रियेणतु राज्यमिति । यथेन्द्रस्य बृहस्पतिरेव मंत्री सांवत्सरः पुरोहितश्च, दैत्यानामुशना, रघूणां वसिष्ठ इति । तादृग् ब्राह्मणाऽलाभे नीतिज्ञ क्षत्रियो वा मन्त्री न कदाचिद्वैश्यशूद्रौ । कुत स्तौ लोकद्वयसिद्धिज्ञौ नेति । एवं धर्माधर्मौ विजिगीषु विषये बोद्धव्यौ तथा शक्तित्रये योगायोगेऽपीहलोकपरलोकयोः सिद्ध्यसिद्ध्यौ बोद्धव्ये ।

## तत्रादावेव धार्मिक विजिगीषुमाह ।

यक्ष्येऽश्वमेधेन विजित्य धात्रीमित्येवमभ्युद्यमिनो नृपस्य ।
विनिघ्नतो विघ्नकरा न्न पापं क्रिया क्रमेणैव पशून् मखेषु ॥ १ ॥

अस्यार्थः— धात्रीं भूमिं विजित्य जित्वाऽश्वमेधेनाऽश्वमेधेनाऽश्वमेधाख्येन यागेनाहं यक्ष्ये, इति शब्दो निश्चयार्थः । एवमनेन प्रकारेणाभ्युद्यमिन उद्यमं कुर्वतो नृपस्य राज्ञं विघ्नकरान् , परिपन्थिजनान् विनिघ्नन्तो जिघांसतः पापं कल्मषं न भवति ॥ स चैकेषु यज्ञेषु चातुर्मास्याऽग्निष्टोमादिषु क्रिया क्रमेण कर्म परिपाट्या पशून् छागादीन् विनिघ्नतो यतमानस्य पातकं न भवति ।



एतदुक्तं भवति :— अश्वमेधाख्ययागस्य सम्पत्त्यर्थं राज्ञा पृथ्वीविजयः कर्तव्यः यस्मात्, "सार्वभौमो यजेतेति श्रुतिः" । तत्र च पृथ्वीविजयप्रवृत्तस्य राज्ञ स्तत्परिपन्थिनो विनिघ्नतः पापं न भवति यथा यज्ञेषु यजमानस्य क्रम क्रियाप्राप्तान् पशून् निघ्नतः पापं न भवति । विहितत्वात्, यत्र यात्रादाने दैवज्ञस्य परलोकसिद्धि र्भवति । यस्मात् विषयोपभोगार्थं पृथ्वीविजय प्रवृत्तस्य परदेशलुण्ठनात्पापं भवति । तत्र चानुमन्तु-र्दैवज्ञस्यापि पापं भवति । तस्माद्राज्ञो धर्मेण विजयिनो यात्रा देया नान्यस्येति । अन्येषां वर्णानां याने परदेशलुण्ठनादिकाक्रिया नोपपद्यते, तस्मात्तेषामप्यन्य धर्मक्रिया प्रवृत्तानाम-नुग्रहार्थं दैवज्ञेन यात्रा देया; ततश्च तस्य धर्म वृद्धि र्भवतीति ॥ १ ॥

## अथ विजिगीषोर्नृपस्य लक्षणमाह ॥

उत्साहमन्त्रप्रभुशक्तियुक्तो धीमान् विनीतेन्द्रिय भृत्यवर्गः ।
प्रजानुरक्तः स्मृतिमान् सहिष्णुर्वृद्धोपसेवी विजिगीषुरिष्टः ॥ २ ॥

अस्यार्थ :— सत्त्वबलारोग्यपराक्रमसम्पदुत्साह शक्तिरुच्यते, दैवपुरुषविज्ञा मंत्र-शक्तिः कोशदुर्गदण्डसंपत्प्रभु शक्तिः ।

तथा च कामन्दकि :—

दाक्ष्यं-श्रैष्ठ्यं तथा मर्षः शौर्यं चोत्साह लक्षणम् ।
गुणैरेतै रुपेतस्य राजा भवितुमर्हति ॥
स्मृते स्तत्परतार्थेषु वितर्के ज्ञान निश्चयः ।
दृढता मन्त्र शक्तिश्च मंत्रसंपत्प्रकीर्तितः ॥
कोशदण्डबलं चैव प्रभुशक्ति रुदाहृता ।
विजिगीषुस्तया युक्तो विजयेत रिपून् सदा ॥ इति ॥

एतेन शक्तित्रयेण युक्तो राजा पृथिवीं वशी कुरुते ।

उक्तञ्च —

शक्तित्रययुतस्येयं वशे तिष्ठति मेदिनी ॥

धीमान् , धीर्विद्यते यस्य स धीमान् , अष्टाङ्गबुद्धियुक्तः । शुश्रूषा, श्रवणं, ग्रहण,

धारणं, विज्ञानोहापोह, तत्वाभिनिवेशनं, रूपाष्टाङ्ग युक्तः ।

तथा च कामन्दकि :—

शुश्रूषा श्रवणं चैव ग्रहणं धारणं तथा ।
ऊहापोहार्थविज्ञानं तत्वज्ञानं च धीगुणाः ॥ इति ॥

बुद्धिमान् बलसंयुक्तमप्यरिन् वशं कुरुते ।

उक्तञ्च —

बुध्यायुक्तो वशं कुर्या च्छत्रूनधिवलानपि ॥

विनीतेन्द्रियभृत्यवर्गः, विनीतानि इन्द्रियाणि भृत्यवर्गश्च यस्येति, पञ्चबुद्धीन्द्रियाणि, श्रोत्रं त्वक् चक्षुषी जिह्वा नासिका चेति। षष्ठं मनः, पञ्चकर्मेन्द्रियाणि, वाक पाणिपादपायूपस्थं चेति।

तथा च —

श्रोत्रं त्वक् चक्षुषी जिह्वा नासिका चेति पञ्चमी ।
पञ्चबुद्धीन्द्रियाण्याहु र्मनः षष्ठानि तानि तु ॥
पायूपस्थं हस्तपादं वाक् चैवात्र तु पञ्चमी ।
पञ्चबुद्धीन्द्रियाण्याहु बलषष्ठानि तानि तु ॥

एतानि विनीतानि यस्य जितात्मनां भृत्य विजयः सुकरः । जितभृत्येन च पृथ्वीविजयः ।

उक्तं च —

जितात्मना नरेन्द्रेण शक्त्या भृत्यजयो भवेत् ।
जितभृत्येन शक्त्येयं कृत्स्ना जेतुं वसुन्धरा ॥

तथा च भगवान् व्यास :—

सततं निग्रहैर्युक्त इन्द्रियाणांश्च यो नरः ।
इच्छन्नर्थान् स्वधर्मं य द्विषतां च पराभवम् ॥
धर्माथौं यः परित्यज्य स्यादिन्द्रियवशानुगः ।



श्रीप्राणधनदारेभ्यः क्षिप्रं स परिहीयते ॥
जितभृत्यं जितामात्यं धृतदण्डं विकारिषु ।
परीक्ष कारिणं दातुं नरं श्रीर्जुषते सदा ॥
अनुरूपाणि कर्माणि भृत्येभ्यो यः प्रयच्छति ।
स भृत्यबलसम्पन्नो राज्यस्य फलमश्नुते ॥

प्रजानुरक्तः, प्रजा अनुरक्ता यस्य अनुरक्तप्रजस्य सर्वाः सम्पदो भवन्ति ।

यत उक्तं —

जितेन्द्रियत्वं विनयस्य कारणं गुणप्रकर्षो विनयादवाप्यते ।
गुणाधिके पुंसि जनोऽनुरज्यते जनानुराग प्रभवा हि सम्पदः ॥

धृतिमान् क्लेशसहः सन्तोपशीलः क्लेशसहेन च शक्त्या वसुमती जेतुम् ।

उक्तं च —

यस्तु क्लेशसहो राजा तस्येयं वसुधा मता ॥

सहिष्णुः क्षमावान स हि जनसंग्रहकर्तुं शक्तो भवति । जनसंग्रह परस्यैव राज्यश्रियः ।

उक्तं च —

क्षमावता नरेन्द्रेण शक्यः पुरुषसंग्रहः ।
संगृहीत नरस्यैव सकला वसुधा मता ॥

वृद्धोपसेवी वृद्धानां ज्ञानवृद्धानां उपासनशीलः सहि, सर्वसम्पदां पात्रतामेति ।

उक्तं च—

वृद्धोपसेवी नृपति पात्रतामेति सम्पदाम् ॥

तथा च भगवान् व्यासः—

प्रज्ञावृद्धं कर्मवृद्धं सुबन्धुं विद्यावृद्धं वयसा चापि वृद्धम् ।
कार्याकार्ये पूजयित्वा प्रसाद्य यं संस्पृशेन्नो समुद्येत्कदापि ॥
वृद्धान् सेवेत सततं विप्रान् वेदविदः शुचीन् ।
वृद्धसेवी हि सततं रक्षोभि रपि पूज्यते
सततं गुरुपूजा च वृद्धानां पर्युपासनम् ।

श्रवणं चैव शास्त्राणां कूटस्थं श्रेय उच्यते ॥
विद्या वृद्धान् हि सततमुपासीत महीपतिः ।
शृणुयाद्धापितं तेभ्यो ह्यर्थं चैवा वधारयेत् ।
विद्यावृद्धान् वयो वृद्धान् बन्धु वृद्धांश्च मानवान् ॥
श्रूताभिजनवृद्धांश्च नह्यमूढोऽवमन्यते ।

एवं विधैर्गुणैयुक्तो विजिगीपुरिष्टोऽभिप्रेतः शोभन इत्यर्थः ।

तथा च कामन्दकिः—

सम्बन्धस्तु प्रकृतिभिर्देहोत्साहः कृतश्रमः ।
जेतुमेषण शीलश्च विजिगीषुरिति स्मृतः ॥

एतेपूक्तेषु गुणेष्वन्येऽनुक्ता गुणाः सर्वेऽन्तर्भवतीति । एवं विधस्य नृपतेर्यात्रा कृ सिद्धिमेति । अतो विपरीतस्य दोषाय भवति ।

उक्तं च—

रक्तासिताद्या हि यथाम्बरस्य वर्णाः सितस्यैव भवन्ति सम्यक् ।
विलग्नतिथ्यादिगुणास्तथैव विशुद्धदोषस्य भवन्ति यातुः ॥ इति ॥

तथा—

यात्रा विशुद्धापि समं प्रवृत्ता यात्रानुरूपाणि फलानि धत्ते ।
जगत्युदीर्णापि हि कौशिकस्य भा भानवी नैव तम प्रमार्ष्टिः ।

किञ्च—

गुणान्वितस्यैव गुणान् करोति यात्रा शुभर्च ग्रहलग्न योगाः ।
व्यर्थाः सदोषस्य गुणान्वितापि वीणेव शब्दाश्रयवर्जितस्य ॥
गुणैः समस्तैरपि संप्रयुक्ता कन्यैव यात्रा विगुणाय दत्ता ।
करोत्यकीर्तिं सुखवित्तहानिं यात्रान्तरज्ञानजडस्य यातुः ॥ इति ॥

## अधुना साम्वत्सरपुरोहितोयो र्लक्षणमाह ।

***सांवत्सर स्तस्य विनीतवेषो धीमाश्च तंत्राङ्ग पटुः कुलीनः ।**

*अधीतवेदः कुलशीलचित्तः सिद्धान्तवेत्ता बहुसंहिताज्ञः ।



**दक्षः प्रगल्भोऽविकलो विनीत स्तादृग्विध स्तस्य पुरोहितोऽपि ॥ ३ ॥**

तस्योक्तगुणयुक्तस्य विजीगीषोः सांवत्सरः संवत्सरवेत्ता ज्यौतिषिक एवं विध इष्टः, विनीतवेशो विनीतोऽनुल्वणोवेषः शरीरालङ्करणं यस्येत्यनेनाऽनुद्धतवेष इत्यर्थः, धीमान् बुद्धिमान्, अष्टाङ्गबुद्धियुक्तः, स्वतंत्राङ्गपटुः स तंत्रे स्वकीये तंत्रे सिद्धान्ते तस्य यान्यङ्गानि गणितहोरा शाखाख्यानि तेषु साङ्गसिद्धान्तेषु पटुः प्रवीणः ।

तथा च—

यस्तु सम्यक्विजानाति होरागणितसंहिताः ।
अभ्यर्च्यः स नरेन्द्रेण स्वीकर्तव्यो जयैषिणः ॥

कुलीनः, विशिष्टे कुले वंशे निरवद्ये साम्वत्सरकुले जातः ।

तथा च भगवान् व्यासः—

कर्माणि विनयं वित्तं भूमिश्चाप्यन्वयागतम् ।
वृत्तांश्रुतिश्च योनिश्च सप्ताङ्गं कुललक्षणम् ॥

एवं कुलीनः सांवत्सरकुले निरवद्ये जातः कुलोचितानि कौलिकानि तद्वान् कुलीनः । दक्षः क्रियारम्भेष्वनलसः क्षिप्रकारी च ।

अनातुरः प्रत्ययितः कृपावान् सुरूपवेषः सतताभियुक्तः ॥
अरागलोभः कुशलः कुलज्ञो जनादृतः सत्यरतः सदारः ।
गम्भीरघोषोऽपरिपन्थुभीरुः शुचिः क्षमी दैवविदेव शस्तः ॥
अप्रदीपा यथा रात्रिरनादित्यं यथा नभः ।
तथाऽसंवत्सरो राजा भ्रमत्यन्ध इवाध्वनि ॥
कृत्स्नाङ्गोपाङ्ग कुशल होरा गणित नैष्ठिकम् ॥
यो न पूजयते राजा स नाशमुपगच्छति ॥
न तथेच्छति भूपतेः पिता जननी वा स्वजनोऽथवा सुहृत् ।
स्वयशोऽभिविवृद्धये यथा हितमातः स्वबलस्य दैववित् ॥
अगणित सांवत्सरिकः षाड्गुण्यविहीनो यो मन्त्री ।
शास्त्रविहीनो वैद्यस्त्रयः पुरुषाश्च यमदूताः ॥

तथा चोक्तम् —

विमृश्य यः प्रारभते स वृद्धो ह्यापत्सु यो नव्यते स धीरः ।
यश्चार्य वृत्तो निरतः स साधु नान्योदि (द) तः कर्मसु यः सदक्षः ॥

प्रगल्भः प्रतिभावान्, समयवित्, अविकलः अव्यङ्गः सर्वावयवपूर्णः, विनीतः साधुवृत्त बिनय सपन्नः ।

तथा च भगवान् पराशरः —

हिंसा दम्भा नृतस्तेय द्विषामर्षविवर्जितम् ।
नरेन्द्र हितमक्रोधं श्रेष्ठं कालविदो विदुः ॥

एवं विधेन दैवविदा सहायेन राज्ञां पृथ्वीं वशं कुरुते ।

उक्तं च

लक्ष्यण्येन कुलीनेन स्कन्धत्रयविदो नृपः ।
सांवत्सरेण क्ष्मां कुर्या त्सहायेनाखिलां वशे ॥
तादृक् विध स्तस्य पुरोहितोऽपि ··· ··· ··· ।

पूर्वोक्तलक्षणस्य नृपतेः पुरोहितोऽपि तांदृग्विधः सांवत्सरोदितगुणयुक्तः, इष्टः । तस्य तु स्वतंत्रं कल्पपञ्चकं तान्याह—

नक्षत्रकल्पोवैतानस्तृतीयं संहिताभिधः ।
चतुर्थोऽङ्गिरसां कल्पः शान्तिकल्पस्तु पञ्चमः ॥
पञ्चकल्पविधानज्ञमाचार्यं प्राप्य पार्थिवः ।
सर्वोत्पातप्रशान्तात्मा भुनक्ति वसुधामिति ॥

नन्वत्र सांवत्सरगुणैः पुरोहितगुणानामतिदेशः कृतः पुरोहित गुणै दैवज्ञगुणानां कथमतिदेशो न कृतः, इत्युच्यते । दैवज्ञाधिष्ठानां दिव्यान्तरिक्षभौमानानुत्पातानां पुरोधसा प्रतीकारः कर्तव्यो न तस्य स्वयं तद्विज्ञानमस्त्यतोऽतिदेशः कृत इति ॥ ३ ॥

## एवं लक्षणयुक्तस्य नृपते दैवपुरुपकारेणसमेतां फलसिद्धिंपण्डिता वर्णयन्त्या

**दैवकार-नरकार-समेतां वर्णयन्ति कवयः फलसिद्धिम् ॥ ३ ½ ॥**

तस्य विजिगीषोर्नृपस्य दैवेन प्राक्कर्मणा नरकारेण पुरुपकारेण च समेतां युक्तां



[क]वयो मुनयः फलसिद्धिं फलानां साधनं वर्णयन्ति, प्राक्कर्मणार्जितानामर्थानामिहजन्मनि [पुरु]षकारेण सिद्धिर्भवतीत्यर्थः । एवमुभययोगेन फलसिद्धेः सिद्धान्तवादान्युपन्यस्य ॥ ३½ ॥

## मतान्तरेणैकस्य फलसिद्धि निमित्ततां वर्णयिषुराह—

**तत्र केचिदवधूय नृकारं दैवमेव फलदायकमाहुः ॥ ४ ॥**

तत्र तस्यां फलसिद्धौ केचिन्मुनयो नृकारं पुरुपकारमवधूय अप्रमाणिकृत्य दैवमेव [के]वलं फलदायकमाहुः, पुरुषकारमन्तरेण सर्वं सिद्ध्यतीत्यर्थः ।

इदानीमेतदेवाप्तवचनेन दृढयति —

लब्धव्यानेव लभते गन्तव्यानेव गच्छति ।
प्राप्तव्यानेव चाप्नोति दुःखानि च सुखानि च ॥

यानि येनान्यजन्मन्युपात्तानि वस्तूनि तानि तस्य लब्धव्यान्युच्यन्ते । तान्येव स पुरुषः [पू]र्वार्जितत्त्वाल्लभते । नालब्धव्यानि कृतेऽपि पुरुपकारे लभते । एवं पूर्वकर्म वशेनैव यानि येन [स्]थानानि गन्तव्यानि तान्येव गच्छति । न यत्र स्वयमिच्छति । तथा पूर्वजन्मन्युपात्तान्येव [प्र]ाप्तव्यानि सुखानीह पुरुषार्थं विनापि प्राप्नोति, नानुपात्तानि कृतेऽपि पुरुषकारे । एवं दुःखा[न]्यप्यकृतापराधोऽपि प्राप्नोति, पूर्वजन्मन्यार्जितत्वात् । कृतापराधोऽपि दुःखं नाप्नोति, [अ]नर्जितत्वात् ॥ ४ ॥

## अधुना तन्मतेनैव पुरुषार्थस्य व्यर्थतामाह —

**उत्थानाच्चेद्भवेत्सिद्धि र्न कश्चिदाप्नुयात्फलम् ।**
**अहोरात्रं विचेष्टन्तो दृश्यन्ते वृत्ति कर्षिताः ॥ ५ ॥**

उत्थानं पुरुषकारः चेच्छब्दो यद्यर्थे, यद्युत्थानात् पुरुपकारादर्थसिद्धिर्नचे त्स्यात्तदा न कश्चित्कर्मणां फलसिद्धिर्नाप्नुयादपितु सर्व एवाप्नुयात् लभते इत्यर्थः । यावच्चाहोरात्रं सर्वदिनानि, अनिद्रा अग्लानिं गताः चेष्टन्ते व्यवहरन्ते, कर्माणि कुर्वन्ति, किं भूताः वृत्तिकर्षिताः, वर्तमानोपायमात्रमप्यनासादयन्तो दृश्यन्ते ॥ ५ ॥

## अथान्तरं तेनैव दैवप्रामाण्यतामाह —

**विहङ्ग इव बद्धो हि नियत्या यमनीश्वरः ।**

विधानविहितादेशो नान्येषामात्मनः प्रभुः ॥ ६ ॥

भाविपदार्थो नियतिः, तथा च भगवान् पराशरः—

कालो दैवं विधिर्हेतु र्नियतिः सृष्टिरीश्वरः ।
भावः कृतार्थ कर्माणि शब्दा पर्यायवाचकाः ॥ इति ॥

हि यस्मादर्थे अयं पुरुषोऽनीश्वरः प्रभुर्न किञ्चित्कर्तुं समर्थः नियत्या बद्धः, अत एव विधानविहितोद्देशो विधानेन दैवेन विहितो दत्त आदेशा आज्ञा यस्य, दैवविहिताज्ञत्वात्तु विहङ्ग पक्षीव परवशो नियत्या संयमितः ।

एतदुक्तं भवति —

पुरुषाकारेणात्मनः कार्यं संपादयति, नापिपरकार्यं, अत एवोक्तं "नान्येषामात्मनः प्रभुरिति" ॥ ६ ॥

## एवं च स्थिते दैवप्राधान्येन पौरुषस्यानारम्भणीयतामाह —

तस्माद्दैवं प्रधानं हि न कुर्यात्कर्ममानुषम् ।
निश्चेष्टमपि लोकेऽस्मिन् भजन्ते भूतिरुत्तमा ॥ ७ ॥

तस्मात्प्रागुक्ताद्धेतोर्दैवं प्राक्कमप्रधानमेवं बुद्ध्वा मानुषं पौरुषं न कुर्यान्नारम्भणीयम्, हि यस्मात्, अस्मिन् लोके निश्चेष्टमप्यकर्मकमप्युत्तमा प्रधानभूतिः समृद्धिर्भजन्ते सेवन्त इति ॥ ७ ॥

## अधुना पौरुषव्यर्थतामाह——

अश्रान्त दुर्जनभयं परिभूय दैव-
मात्माभिमानचपलाः प्रचरन्ति येऽर्थान् ।
तेषां चिरादपि कृतान्तमहापशूनां
हस्तग्रहं न समुपैति जिता च लक्ष्मी ॥ ८ ॥

दैवं परिभूयाऽप्रमाणिकृत्यात्माभिमानचपलाः पौरुषे कृतादराः येऽर्थान् प्रचरन्ति, आरभन्ते, तेषां कृतान्त महापशूनां दैवनिर्मितानां अचिरात् कालान्तरेणाऽपि जिताः प्राप्ता लक्ष्मीः श्रीः, हस्तग्रहं हस्तविषयतां न समुपैतिः नायाति, किं भूतं दैवं अश्रान्तदुर्जन भयं अश्रान्तत्वा-



दुद्युक्तत्वात् दुर्जयोऽनभिभवनीयो भयः, अवश्यं भाविफलदानरूपो यस्य ॥ ८ ॥

## अथ पुरुषकारसिद्धान्तरूपेणाऽन्यमतमाह–

तथाऽपरेऽनपेक्ष्यैव दैवं दर्पाऽवलम्बिनः ।
प्रत्यक्षतः क्रियासिद्धौ केवलं जगुरुद्यमम् ॥९॥

तथा तेनैव प्रकारेणापरे अन्ये केचिद्दर्पावलम्बिनः अवष्टंबमूलाः दैवमनपेक्ष्य प्राक्कर्माऽप्रमाणीकृत्य उद्यमं पौरुषमेव फलदायकं जगुरिति वर्णयन्ति, कथं प्रत्यक्षतः क्रियासिद्धौ सत्यां उद्यममेवात्र हेतुरित्यवगच्छन्तः ।

तथाहि --

कूपखननादुदकप्राप्तिः, निर्मथनादग्न्युत्पत्तिः, वपनछेदनाभ्यां धान्योत्पत्तिः, सङ्ग्रहोपायचर्वनाभ्यां भोजनसिद्धिरिति । एवं सर्व कर्मणामुद्यमेनैव फलसिद्धि दर्शनात्किमत्र दैवः करिष्यतीति ॥ ९ ॥

## अत्र पुरुषकारपराङ्मुखस्य शत्रुपराभवप्राप्तिं दर्शयितुमाह–

उत्थानहीनो राजा हि बुद्धिमानपि सर्वदा ।
प्रधर्षनीयः शत्रूणां भुजङ्ग इव निर्विषः ॥१०॥

हि यस्मादर्थे यस्मादुत्थानहीनः पौरुष क्रियारम्भहीनो राजा नृपः, बुद्धिमान् मतिमानपि सर्वदा सर्वस्मिन् काले शत्रूणां रिपूणां प्रधर्षणीयोऽभिभवनीयो भवति, यथा भुजङ्गः सर्पः निर्विषो विषरहितोऽभिभवनीयो भवति । बुद्धिमानत्र केवलशास्त्रार्थवित्तदनुष्ठानहीनो वाग्वीर इत्युच्यते ॥ १० ॥

## अधुना वाग्वीरादुत्थानवीरस्याधिक्यमाह–

उत्थानवीरपुरुषो वाग्वीरादधितिष्ठति ।
उत्थानवीरं वाग्वीरात् रमयन्त उपासते ॥११॥

पुरुषो मनुष्य उत्थानवीरः पुरुषकारयुक्तो वाग्वीरात् सेवापरायणात् अधितिष्ठत्यु-

पासते । अन्यच्च, उत्थानवीरं पुरुपकारयुक्तं वाग्वीराद्दैवपरायणा रमयन्तः क्रीडय आराधयत उपासते सेवत इत्यर्थः ॥ ११ ॥

## अथ पौरुपारम्भहीनस्यैश्वर्यसम्पर्क एव नभवतीति प्रतिपादयनाह–

विधानगणनाजडः पुरुपकारमुक्तादरो मनोरथ परिश्रमै र्न परिचुम्बति श्री मुखम् ॥११॥

यो विधानगणताद्दैवपरायणत्वेन जडतामापन्नो दैवाश्रयपरः, अत एव पुरुपक उद्यमे मुक्तादर मुक्तः परित्यक्तः आदर श्रद्धा येन, मनोरथपरिश्रमैर्मनोराज्यैरपि चिन्तनी श्रीमुखं लक्ष्मीवदनं न परिचुम्बति नास्वादयति किं पुनः फलत इति ॥ ११ ½ ॥

उदाहरणार्थमाह

पराक्रम विनिश्चितैक सुनयः सद्योद्धृतं *हरि र्मद सुवासितं पिवति कुञ्जरासृङ्मधुः ॥ १

हरिः सिंहः पराक्रमविनिश्चितैकसुनयः पराक्रमेण पौरुपेण विनिश्चयीकृत एको मुख सुनयः शोभनो नयो येन केवल पौरुपावष्टम्भे स्थितः, कुञ्जरासृक् हस्तिरुधिरमेव मधु म सद्य स्तत्क्षणादुद्धृतं निसृतं सुवासितं तन्मदेन सुरभीकृतं पिवत्यास्वादयतीति ॥ १२ ॥

## अधुना सिद्धान्तरूपेण भगवद्व्यासमुखेनोभययोगात्फलसिद्धिमाह–

कृपिवृष्टिसमायोगाद् दृश्यन्ते फल सिद्धयः ।
अस्मिन्नर्थे शृणु श्लोकान् द्वैपायनमुखोद्गतान् ॥ १३ ॥

कृपिं पौरुपं वृष्टिर्दैवं कर्पकः पुरुपः । कर्पकः कृपिं पौरुपेण करोति, दैवो वृष्ट सादयति, यदि कर्पकः कृपिं न करोति तदा वर्षा दैवोऽपि न किञ्चित्फलमासादयति । अ करोति चेत्तदा वृष्ट्या विना न किञ्चित्फलति, यदि पुनः कर्पको बीजं वपति दैवश्च वर्ष तदा फलमधिकमुत्पद्यते, इत्थं दैवपुरुपकारयोर्द्वयोः समायोगात् फलसिद्धयोदृश्यन्ते, पुरु फलमाप्नोतीति, अस्मिन्नर्थे द्वैपायन मुखोद्गतान् व्यासमुख निर्गतान् श्लोकानाकर्णय ॥ १३॥

*अत्र किञ्चित् त्रुटितं दृश्यते ।



## अधुना तानेवाह–

न विना मानुपं दैवा द्दैवं वा मानुपाद्विना ।
नैको निवर्तयत्यर्थमेकारणिमिवानलम् ॥ १४ ॥

मानुपं पौरुपकर्म, तद्दैवं विना न सिध्यति । तथा दैवं प्राक्कर्म मानुपं पुरुपकारं विना न सिद्ध्यति । अत्र दृष्टान्तमाह— "नैको निवर्तयत्यर्थमिति" एकारणिः केवलमग्निमन्थनकाष्ठमनलमग्निं यथा नोत्पादयति । नेत्रहस्तमन्थनकाष्ठैर्विना त तद्वदेव दैवपुरुपकारयोरर्थं न निवर्तयति न सम्पादयति ॥ १४ ॥

## अधुना सिद्धान्तरूपेणाहः—

सिद्ध्यन्ति सर्व आरम्भाः संयोगा त्कर्मणोर्द्वयोः ।
दैवात् पुरुपकाराच्च नत्वेकमात्कथञ्चन ॥ १५॥ ॥

सर्वे आरम्भा निःशेपाः क्रिया द्वयोरुभयोः कर्मयो संयोगात् सिद्ध्यन्ति, दैवात पुरुपकाराच्चेति । दैवात् प्राक्कर्मणः पुरुपकारात् अद्यतन कर्मणश्चेत्यर्थः । नत्वेकस्मादेकतरात् कथञ्चनेति ॥ १५ ॥

## कथमप्यन्यथैतदेवं दैवमुखेन दृढीकर्तुमाह—

अनुशास्ति नरं देवमीह स्वेत्यनुशासकम् ।
ईहानस्य भविष्यामि कुतः फलमनी हि तु ॥ १६ ॥

दैवमीश्वरो नरं पुरुपं अनुशास्ति योजयति । ईहस्वचेष्टां कुर्विति, किं भूतं दैवं अनुशासकं प्रयोजक यत्तदीहानस्य चेष्टांकुर्वतो भविष्यामि संपत्स्यामि । अनीहितुरचेष्टमानस्य कुतः कस्मात्फलमिति । श्वसप्राणने, अनच्, ईहाशब्दः पूर्वः ईहया अनिभिरीहानस्तस्य ईहानस्य व्युत्पत्तिः ॥ १६ ॥

